# विद्युतीय कारोबार ऐन, २०६३ निर्माणको पृष्ठभूमि र प्रक्रिया

**यो शोध-संक्षेप उद्धृत गर्न :**

मार्टिन चौतारी । २०७८ । *विद्युतीय कारोबार ऐन, २०६३ निर्माणको पृष्ठभूमि र प्रक्रिया* । शोध-संक्षेप अंक ३२ । काठमाडौँ : मार्टिन चौतारी । Available at www.martinchautari.org.np/files/bidyutiya-karobar-ain-2063-nirmanko-prishthabhumi-ra-prakriya.pdf

*Publisher*
Martin Chautari
27 Jeetjung Marg, Thapathali
GPO Box 13470, Kathmandu, Nepal
Tel: +977-1-4238050/4102027; Fax: +977-1-4240059
chautari@mos.com.np
www.martinchautari.org.np

## परिचय

मंसिर २२, २०६३ मा लागू गरिएको विद्युतीय कारोबार ऐनको राज्यबाट दुरुपयोग भएपछि नेपालमा चौतर्फी विरोध भइरहेको छ । एकतिर पत्रकार र मानवअधिरकारकर्मीले यसमा रहेको धारा ४७ ले संविधानप्रदत्त अभिव्यक्ति स्वतन्त्रता कुण्ठित गरेको तर्क प्रस्तुत गर्दै यसको संशोधन गर्न माग गरिरहेका छन्[१] भने अर्कोतिर नेपाल प्रहरीले पनि यसमा समयानुकूल परिवर्तन चाहेको छ ।[२] यो कानूनलाई प्रतिस्थापन गर्ने उद्देश्यले सञ्चार तथा सूचना प्रविधि मन्त्रालयले सूचना प्रविधि विधेयक तर्जुमा गरी फागुन २, २०७५ मा प्रतिनिधि सभामा दर्ता गर्‍यो । त्यही महिना यस विधेयकमाथि संसद्मा सामान्य र दफावार छलफल पनि भयो ।[३] विधेयकमा भएका कडा प्रावधानका कारण संसद्मा प्रतिपक्षले र संसद् बाहिर नागरिक समाज, पत्रकार र मानवअधिकारकर्मीले विरोध गरे । विधेयकमाथि भएको विरोध तथा पछिल्लो समयमा देखिएको राजनीतिक अस्थिरता र संसदीय गतिरोधले गर्दा सो विधेयक अहिले पनि संसद्मै विचाराधीन छ ।[४]

यही परिप्रेक्ष्यमा विद्युतीय कारोबार ऐन, २०६३ को निर्माण प्रक्रिया बुझ्ने प्रयास यस शोध-संक्षेपमा गरिएको छ । यस्तो अध्ययनबाट नीति-नियम कसरी बन्छ र ती बनाउँदा कसको सहभागिता हुन्छ भन्ने थाहा पाउन सकिन्छ । यस्तो अध्ययनबाट नीति/ऐन निर्माणको प्रक्रियामा के-कस्ता बहस हुन्छन्, कसको मुद्दा सम्बोधन गरिन्छ, कसको गरिँदैन र त्यस प्रक्रियामा कुन चरणमा के-कस्ता प्रावधान थपघट हुन्छन् भन्ने प्रश्नको उत्तर खोज्न सकिन्छ, जसले नीति निर्माणको अर्थ-राजनीतिबारे पनि जानकारी दिन्छ ।

[१] रासस । २०७६ । विद्युतीय कारोबार ऐनका दुई दफा खारेज गर्न पत्रकार महांघको माग । *अनलाइन खबर*, वैशाख ५ । www.onlinekhabar.com/2019/04/759053 मा उपलब्ध; पुस ३, २०७८ मा हेरिएको ।

[२] रातोपाटी । २०७४ । विद्युतीय कारोबार ऐन परिवर्तन गर्न नेपाल प्रहरीको माग । www.ratopati.com/story/34310/2018/2/21/news मा उपलब्ध; पुस ३, २०७८ मा हेरिएको ।

[३] विस्तृत जानकारीका लागि हेर्नुहोस् : https://hr.parliament.gov.np/en/bills/Za1OEE23

[४] Martin Chautari. 2021. *Freedom of Expression in Nepal in the Digital World: A Policy Review*. Research Brief No. 31. Kathmandu: Martin Chautari.

जारी भएदेखि नै विवादको विषय बन्दै आएको विद्युतीय कारोबार ऐन, २०६३ कसरी आएको थियो, यो निर्माण गर्ने क्रममा के-कस्ता संस्था संलग्न भए र यस्तो सहभागिताले ऐनको प्रावधानमा के कस्तो असर पर्‍यो भन्ने यो शोध-संक्षेपले जानकारी दिन्छ । यो कानून सूचना प्रविधि क्षेत्रमा काम गर्ने व्यक्ति तथा संस्थाको चासो र चिन्ताबाट बने पनि समय-समयमा सर्वसाधारणसँग पनि सुझाव आह्वान गरिएको थियो । त्यस हिसाबले यो कानूनको निर्माण प्रक्रिया सहभागितामूलक देखिए पनि सूचना प्रविधि क्षेत्रको बढी सक्रियता र प्रभाव रहेको थियो ।

वि.सं. २०५७ मा यस ऐनको आवश्यकता महसुस गरिएदेखि २०६३ मा संसद्बाट यो ऐन पारित भई *नेपाल राजपत्र*मा छापिए सम्मको अवधिमा विभिन्न संस्थाको संलग्नताबारे यो संक्षेपमा विश्लेषण गरिएको छ । यस सम्बन्धमा त्यति बेलाका विभिन्न घटनाक्रमबारे पत्रपत्रिकामा छापिएका सामग्रीहरूको अभिलेख (न्यूज क्लिपिङ्स) सूचना प्रविधि क्षेत्रप्रति गहिरो रुचि राख्ने अध्येता/पत्रकार स्व. विनय कसजूले राख्नुभएको थियो ।[५] उक्त अभिलेखको अध्ययनको साथै मुद्रण विभागको वेबसाइटमा राखिएका *नेपाल राजपत्र* पनि अध्ययन गरिएको थियो । त्यस्तै, कम्प्यूटर एसोसियसन अफ नेपाल (क्यान), विज्ञान तथा प्रविधि मन्त्रालय, र राष्ट्रिय योजना आयोगका पुराना वेबसाइटमा भएका यस कानूनका मस्यौदाहरू पनि अध्ययन सामग्रीका रूपमा उपयोग गरियो । यो कानून निर्माणका क्रममा संलग्न क्यानका प्रतिनिधि, विज्ञान तथा प्रविधि मन्त्रालयका केही पदाधिकारी, वकिल र यस बारेमा रिपोर्टिङ गरेका पत्रकारसँग अन्तर्वार्ता गरी थप जानकारी लिइयो । साथै, २०६३ मा यो कानून संसद्बाट पारित हुने क्रममा त्यहाँ भएको बहसको भर्बेटम पनि हेरिएको थियो ।

गुणात्मक विधिबाट गरिएको यस अध्ययनका केही सीमा छन् । नेपालमा संस्थागत स्मरण (इन्स्टिच्यूसनल मेमोरी) कमजोर भएका कारण २०५७ देखि विद्युतीय कारोबारबारे ऐन निर्माणका क्रममा भएका सबै गतिविधि यस अध्ययनमा पत्ता लगाउन सकिएन । क्यानमा पुराना दस्तावेज सुरक्षित नभएकाले कतिपय घटनाका

[५] सो न्यूज क्लिपिङ्स सार्वजनिक प्रयोजनका लागि उहाँले मार्टिन चौतारी पुस्तकालयलाई हस्तान्तरण गर्नुभएको थियो, जुन अद्यापि पुस्तकालयमा उपलब्ध छ ।

मिति यकिन साथ उल्लेख गर्न पनि सकिएन। यस्ता दस्तावेजको अभाव हुँदा कानून निर्माणमा संलग्न व्यक्तिहरूसँग कुराकानी गरिएको थियो। यद्यपि यस्तो कुराकानी पुराना सम्झनामा निर्भर रहनुपर्ने कारणले कतिपय विषयमा गहिरो छलफल हुन सकेन। यस्तो अवस्थामा पत्रपत्रिकामा प्रकाशित समाचार र लेख नै यस अनुसन्धानको मुख्य आधार बन्नपुग्यो। यो कानून निर्माण हुँदाको समयमा सूचना प्रविधि क्षेत्र नेपालमा नयाँ विषय भएकाले यस सम्बन्धी समाचार सामग्री मिडियामा थोरै मात्र प्रकाशित भएका थिए र यसबारे समाचार लेख्ने पत्रकार ज्यादै न्यून थिए। समय-समयमा सार्वजनिक गरिएका यस कानूनका मस्यौदामा वर्ष मात्र उल्लेख गरिएका छन्। त्यसैले यकिनका साथ ती मस्यौदा कहिले सार्वजनिक गरिएका हुन् भन्ने थाहा पाउन सकिएको छैन।

यस शोध-संक्षेपलाई मुख्य दुई खण्डमा विभाजन गरिएको छ। पहिलो खण्डमा विद्युतीय कारोबार ऐन, २०६३ निर्माणको पृष्ठभूमि बुझ्न खोजिएको छ। यसका लागि शुरूमा कानून निर्माणको आवश्यकता किन थियो र त्यसका लागि कसरी वातावरण बन्यो भन्ने जानकारी दिइएको छ। त्यसपछिको खण्डमा कानूनका विभिन्न मस्यौदा कसरी बनाइएको थियो, यस क्रममा के-कस्ता संस्था संलग्न भए भन्ने वर्णन र विश्लेषण छ। अन्तिममा निष्कर्ष दिइएको छ।

## कानून निर्माणको वातावरण

नीति-नियम निर्माणको वातावरण अन्तर्राष्ट्रिय र राष्ट्रिय परिवेशले बनाउँछ। विद्युतीय कारोबार सम्बन्धी कानून निर्माण हुनुमा यस्ता दुवै खाले परिवेश जिम्मेवार थिए। मुख्यतः सन् १९९० को मध्यमा अन्तर्राष्ट्रिय व्यापारमा विद्युतीय माध्यमको प्रयोग बढ्न थालेपछि संयुक्त राष्ट्र संघले यसको नियमन सम्बन्धी कानूनमा चासो लियो। संसारभरि नै सूचना प्रविधिको वाहवाही भइरहेको अवस्थामा संयुक्त राष्ट्र संघको यो कदम उपयुक्त नै थियो। त्यसैले संयुक्त राष्ट्र संघको अन्तर्राष्ट्रिय व्यापार कानून सम्बन्धी आयोगले सन् १९९६ देखि नै विद्युतीय व्यापारबारे नमुना कानून बनाएको थियो। यस संस्थाले आफ्नो लागि मात्र कानून बनाएन कि संलग्न राष्ट्रहरूलाई पनि व्यापार वा व्यवसाय सम्बन्धी नयाँ कानून निर्माण गर्दा होस् वा विद्यमान कानूनमा

संशोधन गर्दा विद्युतीय व्यापारबारे उक्त नमुना कानूनलाई ध्यान दिन अनुरोध गऱ्यो ।[६] भारतले यो नमुना कानूनलाई समेत आधार मानेर सूचना प्रविधि ऐन बनाउन थाल्यो र सन् २००० मा लागू गऱ्यो ।[७] छिमेकी देश भारतमा यस सम्बन्धी कानून बनेपछि त्यसको प्रभाव नेपालमा पऱ्यो ।

नेपालमा विद्युतीय कारोबार सम्बन्धी ऐनको आवश्यकताबारे सूचना प्रविधि नीति, २०५७ निर्माण क्रमसँगै बहस शुरू भएको देखिन्छ । यो नीति बनाउन सन् १९९९ मा तत्कालीन सरकारले राष्ट्रिय सूचना प्रविधि विकास कार्य समिति गठन गरेको थियो । सेप्टेम्बर १९९९ मा बसेको उक्त समितिको पहिलो बैठकले सूचना प्रविधि उपसमिति गठन गऱ्यो । यस उपसमितिले सूचना प्रविधि लगायत शिक्षा क्षेत्रका व्यक्तिलाई बोलाई छलफल गरेको थियो । यसै छलफलको दौरान सूचना प्रविधिबारे भिजन र रणनीति पत्र निर्माण गर्नुपर्ने महसुस सहभागीले गरे । त्यसपछि सूचना प्रविधिमा सर्वव्यापी पहुँच, शिक्षा तथा तालिम, र व्यापार तथा सरकारमा सूचना प्रविधिको प्रयोग गरी तीन क्षेत्रमा छ ओटा रणनीति पत्र तयार गरियो । त्यसमध्ये एउटा रणनीति पत्र विद्युतीय कारोबार सम्बन्धी थियो ।[८]

सूचना प्रविधि विज्ञ मनोहर भट्टराईले तयार गरेको यो रणनीति पत्रमा विद्युतीय माध्यम, मुख्य गरी इन्टरनेट मार्फत हुने व्यापारलाई विद्युतीय कारोबार मानिएको छ र यस्तो व्यापारलाई इन्टरनेट अर्थतन्त्रको मुख्य अवयव भनिएको छ । यस रणनीति पत्रमा नेपाल विश्व व्यापार संगठनको सदस्य हुन लागेकाले नेपालले सूचना अर्थतन्त्र र विद्युतीय कारोबारबारे नीति र रणनीति बनाउन आवश्यक भएको जिकिर गरिएको

[६] हेर्नुहोस्, United Nations Commission on International Trade Law. 1999. *UNCITRAL Model Law on Electronic Commerce with Guide to Enactment 1996*. Available at https://uncitral.un.org/sites/uncitral.un.org/files/media-documents/uncitral/en/19-04970_ebook.pdf; accessed November 30, 2021.

[७] Abhilash, C.M. 2002. E-commerce Law in Developing Countries: An Indian Perspective. *Information & Communication Technology Law* 11(3): 269–281.

[८] His Majesty's Government. 2000. *Proceedings of a National Stakeholders Workshop on Strategy Papers Prepared for Nepal on Information Technology for Development (August 24, 2000)*. Kathmandu: National Planning Commission Secretariat.

छ । साथै, नेपालमा विद्युतीय कारोबार सम्बन्धी कानूनको अभावमा विद्युतीय माध्यमबाट कारोबार गर्दा व्यापारी र ग्राहक असुरक्षित भएकोले यस सम्बन्धी कानून बनाउन सुझाव दिइएको छ । यस्तो कानूनले विद्युतीय भुक्तानी, गोपनीयता, बौद्धिक सम्पत्ति, सुरक्षा जस्ता विषय सम्बोधन गर्नुपर्ने पनि यस रणनीति पत्रमा उल्लेख छ ।[९]

यी छ ओटा कार्यपत्रको अध्ययनपछि नै उपसमितिले सूचना प्रविधि नीतिको एउटा मस्यौदा बनाएको थियो । त्यो मस्यौदा र रणनीति पत्रमाथि सरकारी, प्राज्ञिक क्षेत्र, निजी क्षेत्र र नागरिक समाजका प्रतिनिधिबीच छलफल गराइएको थियो । प्राप्त सुझावका आधारमा तयार गरिएको मस्यौदा राष्ट्रिय सूचना प्रविधि विकास कार्य समितिमा बुझाइएको थियो । त्यसपछि राष्ट्रिय सूचना प्रविधि विकास कार्य समितिले उक्त मस्यौदा विज्ञान तथा प्रविधि मन्त्रालयमा बुझाएको थियो । यसै नीतिलाई अक्टोबर २००० मा पारित गरियो ।[१०] यस नीतिको एउटा रणनीतिमा विद्युतीय व्यापारलाई वैध बनाउने भनिएको छ ।[११] त्यसका खातिर विद्युतीय कारोबार सम्बन्धी कानून निर्माणको गृहकार्य शुरू गरिएको थियो ।

## कानून निर्माण र कार्यान्वयनको चरण

विद्युतीय कारोबार सम्बन्धी कानून लागू हुन धेरै समय लागेको थियो । वि.सं. २०५७ मै यसको मस्यौदा बनाइएको भए पनि २०६१ मा मात्र यो कानून अध्यादेशका रूपमा लागू भयो । अनि २०६३ मा संसद्बाट पारित भएपछि यो ऐन बनेर आयो । त्यसैले यस खण्डमा कानून निर्माण यात्रालाई तीन उपशीर्षकमा बुझ्न खोजिएको छ । पहिलो,

[९] Bhattarai, Manohar K. 2001. Electronic Commerce. In *Information Technology for Development: IT Policy and Strategy Papers for Nepal*. Greta M. Rana, Kesang T. Lama and Manohar K. Bhattarai, eds., pp. 135–154. Kathmandu: National Planning Commission.

[१०] His Majesty's Government. 2000. *Proceedings of a National Stakeholders Workshop on Strategy Papers Prepared for Nepal on Information Technology for Development (August 24, 2000)*. Kathmandu: National Planning Commission Secretariat.

[११] श्री ५ को सरकार । २०५७ । *सूचना प्रविधि नीति, २०५७* । काठमाडौँ : विज्ञान तथा प्रविधि मन्त्रालय ।

२०५७ देखि २०५८ वैशाख सम्मको अवधि, जुन बेला यो कानूनलाई ऐनका रूपमा ल्याउने प्रयास भयो। दोस्रो, २०५८ जेठदेखि २०६२ चैत सम्मको समय, जुन बेला यो कानून अध्यादेशका रूपमा ल्याउन खोजियो र २०६१ भदौबाट लागू पनि गरियो। तेस्रो, २०६३ देखिको अवधि, जब यो ऐनका रूपमा संसद्‌बाट पारित भयो।

## *मस्यौदा निर्माणको गृहकार्य*

नेपालमा कानून निर्माणको प्रचलित अभ्यास अनुसार संसद्‌मा विधेयक प्रस्तुत गरी विधायिकाद्वारा बहुमतले त्यसलाई पारित गरेपछि स्वीकृतिका लागि राष्ट्रप्रमुख समक्ष प्रस्तुत गर्नुपर्छ। र, राष्ट्रप्रमुखले लालमोहर लगाई स्वीकृत गरेपछि त्यो कानूनका रूपमा लागू हुन्छ। २०४७ को संविधानमा विधेयकका रूपमा कानून निर्माण गर्ने स्थान विधायिकालाई मानिएको थियो। अर्थ विधेयक बाहेक अन्य विधेयक सदनको अधिवेशन चलिरहेको बेला प्रतिनिधिसभा वा राष्ट्रियसभामा प्रस्तुत गरिन्थ्यो। तर एउटा सभाबाट पारित भएको विधेयक अर्को सभामा चाँडै नै पठाउनुपर्थ्यो। धेरै अवस्थामा दुवै सभाबाट बहुमतले पारित भएपछि विधेयक स्वीकृतिका लागि राष्ट्रप्रमुख समक्ष पठाइन्थ्यो।[१२]

तर विधेयक प्रस्तुत हुनु अगाडि विधेयकको मस्यौदा नै बन्नुपर्‍यो। विद्युतीय कारोबार सम्बन्धी कानून निर्माणको जिम्मा विज्ञान तथा प्रविधि मन्त्रालयको थियो तर त्यहाँ त्यति बेला सूचना प्रविधि सम्बन्धी ज्ञान भएका मानिस कम थिए। त्यसैले मन्त्रालयले कम्प्यूटर एसोसियसन अफ नेपाल (क्यान) सँग सहयोग माग्यो। त्यसपछि क्यानले विद्युतीय कारोबार सम्बन्धी कानूनको एउटा मस्यौदा तयार पार्‍यो। यसका लागि क्यानले कानूनका ज्ञाता दुर्गा भुर्तेलको सहयोग लिएको थियो। भुर्तेलका अनुसार उनले मस्यौदा बनाउने क्रममा विद्युतीय कारोबार सम्बन्धी भारत र अमेरिकामा प्रचलित कानूनलाई आधार बनाएका थिए। साथै, क्यानका पदाधिकारी लगायत सूचना प्रविधि क्षेत्रका अरू विज्ञसँग सल्लाह लिएका थिए।[१३] सन् २०००

[१२] श्री ५ को सरकार। २०४७। *नेपाल अधिराज्यको संविधान, २०४७*। काठमाडौँ: कानून तथा न्याय मन्त्रालय, कानून तथा व्यवस्था समिति।

[१३] दुर्गा भुर्तेलसँग कात्तिक २९, २०७८ मा गरिएको इमेल वार्ता।

देखि २००२ सम्मको अवधिमा क्यानका महासचिव रहेका राजिव सुब्बाका अनुसार उक्त मस्यौदा अंग्रेजी भाषामा थियो। सो मन्त्रालयलाई बुझाइएको थियो र मन्त्रालयले त्यसलाई नेपालीमा अनुवाद गरेको थियो।[१४]

अनुवाद गर्ने क्रममा यो विधेयकलाई "सूचना प्रविधि ऐन, २०५७" भनिएको देखिन्छ। भारतमा इन्फोर्मेशन टेक्नोलोजी एक्ट, २००० भनिएकाले नेपालमा पनि त्यही अनुवाद गरी नाम राखिएको हुनुपर्छ। पुस २०५७ मै "सूचना प्रविधि ऐन, २०५७" को मस्यौदा तयार भइसकेको समाचार *नेपाल समाचारपत्र* र *कान्तिपुर* दैनिकमा प्रकाशित भएका थिए।[१५] *नेपाल समाचारपत्र*को समाचारमा त्यो मस्यौदा एक दुई दिनभित्रै मन्त्रिपरिषद्मा पेश गरिने उल्लेख थियो। साथै विज्ञान तथा प्रविधि मन्त्रालयका तत्कालीन प्रवक्ता पुण्यप्रसाद न्यौपानेले मन्त्रिपरिषद्ले स्वीकृति दिएमा आउने संसद्को हिउँदे अधिवेशनमा यो विधेयक प्रस्तुत गर्ने जानकारी दिएका थिए।[१६] त्यसपछि चैतमै विज्ञान तथा प्रविधि मन्त्रालयले सूचना प्रविधि क्षेत्रका संस्था र व्यक्तिसँग सुझाव मागेको थियो। क्यानले त्यस बेला उक्त विधेयकको नाम परिवर्तन गरी "विद्युतीय कारोबार र डिजिटल हस्ताक्षर सम्बन्धी व्यवस्था गर्न बनेको विधेयक" राख्न अनुरोध गर्‍यो।[१७] यसकै आधारमा "विद्युतीय (इलेक्ट्रोनिक) कारोबार र डिजिटल हस्ताक्षर सम्बन्धी व्यवस्था गर्न बनेको विधेयक" बनाइएको हुनुपर्छ, जुन क्यानको वेबसाइटमा पनि राखिएको थियो।

यो मस्यौदा धेरै हदसम्म भारतको सूचना प्रविधि ऐनसँग मेल खान्छ।[१८] नेपाली मस्यौदामा भएको प्रस्तावना र १ देखि ८ सम्मको परिच्छेदको शीर्षक भारतीय कानूनमा जस्तै छ। अनि गोपनीयता भंग गरेमा हुने सजाय पनि भारतीय कानूनमा झैँ "एक लाख रुपैयाँसम्म जरिवाना वा एक वर्षसम्म कैद वा दुवै सजाय" भन्ने छ। तर

[१४] राजिव सुब्बासँग मंसिर १७, २०७८ मा गरिएको कुराकानी।

[१५] सेढाई, रामशरण। २०५७। सूचना प्रविधि सम्बन्धी मस्यौदा ऐन तयार। *कान्तिपुर*, पुस ६, पृ. ११।

[१६] नेपाल समाचारपत्र। २०५७। कम्प्यूटर अपराधीलाई नेपालमा पनि दण्ड सजाय। पुस ५, पृ. १।

[१७] वाग्ले, दिनेश। २०५८। नेपाली आई.टी.–सन्ताउन्नमा सफल। *नेपाल*, वैशाख १-१५, पृ. ३६–३८।

[१८] हेर्नुहोस्, Government of India. 2000. The Information Technology Act, 2000. *The Gazette of India*. Part II. Section 1, June 9.

भारतीय कानूनमा अश्लील सामग्रीको प्रकाशन विद्युतीय स्वरूपमा गर्न नहुने प्रावधान पनि छ, जुन नेपाली कानूनमा छैन । यसबाट त्यस बेला अभिव्यक्ति स्वतन्त्रताको पक्षलाई विद्युतीय कारोबार सम्बन्धी ऐनले सम्बोधन गर्न नहुने सोच बनाएको प्रस्ट हुन्छ । चाखलाग्दो कुरा, यस मस्यौदामा कम्प्यूटर एसोसियसन अफ नेपालबारे पनि एउटा दफा छ । दफा ७५ मा सूचना प्रविधि उद्योगका लागि क्यानले आचार संहिता बनाउनसक्ने उल्लेख छ ।[१९] यसले यो मस्यौदा निर्माणमा क्यानको संलग्नता पुष्टि गर्छ । यो दफा त्यस पछिका मस्यौदाबाट हटाइएको देखिन्छ ।

पुस २०५७ मै मन्त्रिपरिषद्मा पठाइएको मस्यौदा थप परिमार्जनका लागि कानून मन्त्रालयमा फिर्ता गरिएको थियो । त्यसपछि यसमा कानून मन्त्रालयले आवश्यक काम कारवाही गरेको थियो । कानून मन्त्रालयको मुख्य काम प्रस्तावित कानून सरकारको नीति, संवैधानिक अनि राष्ट्रिय, अन्तर्राष्ट्रिय कानून तथा महासन्धि अनुकूल भए-नभएको हेर्नु हो । यसै सिलसिलामा कानून मन्त्रालय, विज्ञान तथा प्रविधि मन्त्रालय र कानून सुधार आयोगका प्रतिनिधि मिली विधेयकमा आवश्यक संशोधन गरियो ।[२०]

यसरी कानून मन्त्रालयमा करिब एक वर्ष जति रहेपछि पुस ७, २०५८ मा साइबर कानूनको मस्यौदा सार्वजनिक गरिएको थियो । सर्वसाधारणको सुझाव पनि आओस् भनेर विज्ञान तथा प्रविधि मन्त्रालय र राष्ट्रिय योजना आयोगको वेबसाइटमा पनि यो मस्यौदा राखिएको थियो ।[२१] त्यस पछिको हिउँदे अधिवेशनमा यो विधेयक पारित गर्ने लक्ष्य विज्ञान तथा प्रविधि मन्त्रालयको थियो र विधेयकको मस्यौदामाथि छलफल होओस् भनेर काठमाडौँमा छलफल गरिएको थियो । काठमाडौँमा भएको उक्त कार्यक्रममा तत्कालीन विज्ञान तथा प्रविधि मन्त्री भक्तबहादुर बलायर, त्यस मन्त्रालयका सचिव महेशमान श्रेष्ठ, अनि कानून, न्याय तथा संसदीय व्यवस्था मन्त्रालयका सचिव उदय नेपाली श्रेष्ठले यस कानूनले विद्युतीय कारोबारलाई सुरक्षित र भरपर्दो बनाउने मात्र बताएनन् प्राप्त सुझावका आधारमा उक्त विधेयक सुधार

[१९] हेर्नुहोस्, श्री ५ को सरकार । २०५७ । विद्युतीय (इलेक्ट्रनिक) कारोबार र डिजीटल हस्ताक्षरसम्बन्धी व्यवस्था गर्न बनेको विधेयक । अप्रकाशित मस्यौदा, विज्ञान तथा प्रविधि मन्त्रालय, श्री ५ को सरकार ।

[२०] कानून मन्त्रालयका तत्कालीन सचिव उदय नेपाली श्रेष्ठसँग पुस १, २०७८ मा गरिएको कुराकानी ।

[२१] गोरखापत्र । २०५८क । इलेक्ट्रनिक कारोबारसम्बन्धी विधेयकको तयारी अन्तिम चरणमा । पुस ८, पृ. १ ।

गर्ने जानकारी पनि दिए ।[२२] त्यस बेला सार्वजनिक गरिएको सुझावका केही दफा *गोरखापत्र*मा छापिएको थियो ।[२३] उक्त विधेयकलाई "विद्युतीय सञ्चार माध्यमबाट हुने कारोबारलाई नियमित गर्ने व्यवस्था गर्न बनेको विधेयक" भनिएको थियो ।

यस मस्यौदालाई २०५७ को मस्यौदासँग तुलना गर्दा केही नयाँ तथ्य फेला पर्छन् । यी दुवैबीच धेरै समानता भए पनि केही महत्त्वपूर्ण दफा थपिएको थियो । उदाहरणका लागि २०५८ को मस्यौदामा "विद्युतीय स्वरूपमा गैरकानूनी कुरा प्रकाशन गर्ने" बारे एउटा दफा थपिएको छ । दफा ६३ मा भनिएको छ :

> १) विद्युतीय स्वरूपमा गैरकानूनी कुरा प्रकाशन गर्ने : १. कम्प्यूटर, इन्टरनेट लगायतका विद्युतीय सञ्चार माध्यमहरूमा प्रचलित कानूनले प्रकाशन तथा प्रदर्शन गर्न नहुने भनी रोक लगाएका सामग्रीहरू प्रकाशन वा प्रदर्शन गर्ने वा गर्न लगाउने कुनै पनि व्यक्तिलाई दश हजार रुपैयाँसम्म जरिवाना वा एक महिनासम्म कैद वा दुवै सजाय हुनेछ ।
> २) कुनै व्यक्तिले उपदफा (१) बमोजिमको कसुर पटक-पटक गरेमा प्रत्येक पटक अघिल्लो पटक भएको सजायको डेढी सजाय हुनेछ ।[२४]

यो मस्यौदामा दण्ड सजाय पनि घटाइएको थियो । जस्तै, २०५७ मा गोपनीयता भंग गर्नेलाई तोकिएको सजाय २०५८ को मस्यौदामा घटाइएको छ । २०५७ को मस्यौदामा "एक लाख रुपैयाँसम्म जरिवाना वा एक वर्षसम्म कैद वा दुवै सजाय" भनिएको थियो तर २०५८ को मस्यौदामा "दश हजार जरिवाना वा एक महिनासम्म कैद वा दुवै सजाय" बनाइएको थियो । सायद अगाडिको मस्यौदामा प्रस्तावित सजाय धेरै भएको गुनासो आएकाले त्यसलाई घटाइएको हुनुपर्छ ।

[२२] नेपाल समाचारपत्र ।२०५८ । कम्प्यूटरबाट हुने अपराध नियन्त्रण गर्न कानूनको तयारी । पुस ७, पृ. २ ।

[२३] गोरखापत्र । २०५८ख । कम्प्यूटर अपराध रोक्न ऐन बन्दैछ । पुस १३, पृ. २ । र, गोरखापत्र । २०५८ग । कम्प्यूटर अपराध रोक्न ऐन बन्दैछ । पुस २०, पृ. २ ।

[२४] श्री ५ को सरकार । २०५८ । विद्युतीय सञ्चार माध्यमबाट हुने कारोबारलाई नियमित गर्ने व्यवस्था गर्न बनेको विधेयक । अप्रकाशित मस्यौदा, विज्ञान तथा प्रविधि मन्त्रालय, श्री ५ को सरकार ।

यसको मतलब विद्युतीय कारोबार अनि विद्युतीय व्यापारसँग असम्बन्धित अभिव्यक्ति स्वतन्त्रतालाई बन्देज लगाउन सकिने प्रावधान २०५८ को पुसभित्रै राखिसकिएको थियो। त्यसपछि थप परिमार्जन गरी २०५८ फागुनमा सो ऐनको मस्यौदा मन्त्रिपरिषद्मा बुझाइएको थियो, जुन त्यहीँ थन्किएर बस्यो।

### *अध्यादेशको बाटो*

जेठ ८, २०५९ पछि नेपालमा यो कानून संसद्बाट पारित भई ऐन बन्ने सम्भावना क्षीण भयो। त्यस दिन प्रधानमन्त्री शेरबहादुर देउवाको सिफारिसमा राजा ज्ञानेन्द्रले प्रतिनिधिसभा विघटन गरेका थिए। अनि असोज १८, २०५९ मा प्रधानमन्त्री शेरबहादुर देउवालाई "असक्षम" घोषणा गरी राजाले मन्त्रिपरिषद् नै विघटन गरे। त्यस बेला प्रधानमन्त्रीले कात्तिक २७ मा हुने भनिएको प्रतिनिधि सभाको चुनाव गर्न नसकिने जानकारी राजालाई दिई संवैधानिक बाधा अड्काउ फुकाउन अनुरोध गरेका थिए।[२५] यस्तो राजनीतिक परिवेशमा यो कानून निर्माण प्रक्रियाले अर्कै बाटो लियो। अब विद्युतीय कारोबार सम्बन्धी ऐन अध्यादेशबाट मात्र आउनसक्ने भयो।

नेपालको संविधान २०४७ मा दुवै सदन नचलेको अवस्थामा राजाले चाहेमा संविधानको प्रतिकूल नहुने गरी आवश्यक अध्यादेश जारी गर्न सकिने उल्लेख थियो। यस्तो अवस्थामा त्यसपछि बसेको संसद्को दुवै सदनमा अध्यादेश पेश गर्नुपर्ने र यदि सदनले अस्वीकार गरेमा उक्त अध्यादेश स्वतः निष्क्रिय हुन पुग्थ्यो। त्यतिमात्र होइन, राजाले चाहे जहिले पनि अध्यादेश खारेज गर्न सक्थे। यसरी संसद्बाट निष्क्रिय वा राजाबाट खारेज नगरे पनि "जारी भएको ६ महिनापछि वा दुवै सदनको बैठक बसेको ६० दिनपछि स्वतः निष्क्रिय" हुने संवैधानिक व्यवस्था थियो।

अनधिकृत तरिकाले कम्प्यूटर, वेबसाइट वा सर्भरमा प्रवेश गर्ने कार्य (ह्याकिङ) को समस्या बढ्दैजाँदा चाँडै यो कानून ल्याउनैपर्ने बाध्यता थियो।[२६] मंसिर २०५९ तिर नेपाल प्रहरीकै वेबसाइट बिगारेको मुद्दामा समातिएका सरोज जोशीलाई कानूनकै

[२५] श्री ५ को सरकार। २०५९। शाही सन्देश। *नेपाल राजपत्र*, खण्ड ५२, अतिरिक्ताङ्क ४९, असोज १८।

[२६] अधिवक्ता सतिशकृष्ण खरेलसँग असोज १, २०७८ मा गरिएको कुराकानी।

अभावमा १५ दिन थुनामा राखेर छोड्नुपरेको घटनाले पनि त्यति बेला यो कानूनको आवश्यकतालाई उजागर गरेको थियो। त्यस्तै, पुस २०५९ को पहिलो साता ह्याकरको एक समूहले केही महत्त्वपूर्ण वेबसाइट र इन्टरनेट सेवा प्रदायकको सञ्चालन प्रणाली ध्वस्त बनाउने चेतावनी दिएको थियो। क्यानका केही पदाधिकारी, इन्टरनेट सेवा प्रदायक, सूचना प्रविधि व्यवसायी र विज्ञलाई इमेल मार्फत यस्तो चेतावनी दिइएको थियो। त्यस बेला क्यानले ह्याकिङबाट हुने क्षतिबाट सुरक्षित हुन दीपक रौनियारको संयोजकत्वमा समिति नै गठन गरेको थियो। यस्तो परिस्थितिमा विज्ञहरूले अध्यादेश मार्फत नै भए पनि साइबर कानून ल्याउन सरकार समक्ष माग गरेका थिए।[२७]

विज्ञान तथा प्रविधि मन्त्रालयका तत्कालीन प्रवक्ता पुरुषोत्तम घिमिरेका अनुसार जेठ २०, २०६० मा मन्त्रिपरिषद्बाट पुरानो मस्यौदा फिर्ता लिई नेपाल कानून सुधार आयोगको सहयोगमा नयाँ मस्यौदा तयार गरी सरकारलाई बुझाउने योजना थियो।[२८] सरकारले यो कानूनलाई महत्त्व दिएको थियो र साउन १ मा प्रस्तुत बजेटमा पनि "सूचना प्रविधिको विकासका लागि सूचना सम्प्रेषण सञ्जालमा आउने विकृति र दुरुपयोग रोक्न साइबर कानून तर्जुमा गरिनेछ" भन्ने उल्लेख थियो।[२९] साउन २०६० मा १५ दिनको अवधि दिएर सर्वसाधारणसँग सुझाव मागिएको पनि थियो। कानून, न्याय तथा संसदीय व्यवस्था मन्त्रालयले नेपाल कानून सुधार आयोगलाई समयानुकूल सुधार गरी सबैको सल्लाह लिन र त्यसपछि आवश्यक सुधार गर्न सुझाव दिएको थियो। तदअनुसार सरोकारवालाहरूबाट सुझाव लिने उद्देश्यले साउन १८, २०६० मा काठमाडौँमा एक छलफल कार्यक्रम आयोजना गरिएको थियो।[३०] प्रस्तावित विधेयकमा १० हजारदेखि ५० हजार सम्म जरिवाना र बढीमा छ महिनासम्म कैदको दण्ड प्रावधान राखिएको थियो। काठमाडौँमा भएको त्यस कार्यक्रममा तत्कालीन

[२७] खत्री, विजयबाबु। २०५९। अध्यादेशद्वारा साइबर कानून ल्याउन माग : ह्याकर समूहद्वारा वेबसाइट र इन्टरनेट सेवा ध्वस्त पार्ने चेतावनी। *कान्तिपुर*, पुस ९।

[२८] गोरखापत्र। २०६०। विद्युतीय कारोबार ऐन ल्याइने तयारी। साउन १५, पृ. १२।

[२९] श्री ५ को सरकार। २०६१। आर्थिक वर्ष २०६१/६२ को आय-व्ययको सार्वजनिक जानकारी वक्तव्य। www.mof.gov.np/site/publication-detail/2282 मा उपलब्ध; मंसिर १४, २०७८ मा हेरिएको।

[३०] कान्तिपुर। २०६०। विद्युतीय कारोबार विधेयक सरलीकरण गर्न सुझाव। साउन १९, पृ. ९।

अर्थमन्त्री डा. प्रकाशचन्द्र लोहनीले उक्त दण्ड जरिवाना नगण्य रहेको विचार व्यक्त गरेका थिए। "अपराध गर्नेले करोडौँको तथ्यांक नोक्सान गरिसकेको हुन्छ तर दण्ड ५० हजारमात्रै भयो, के अर्थ भो र" *स्पेसटाइम* दैनिकमा प्रकाशित समाचारमा उनलाई उद्धृत गरिएको छ।[३१] अपराधले निम्त्याउने क्षतिको तुलनामा दण्ड सजाय निकै कम हुँदा अपराधलाई निरुत्साहित गर्न नसकिने लोहनीको तर्क थियो।

यो कानून कहिले मन्त्रिपरिषद्मा पठाइएको थियो भन्ने यकिन मिति पत्ता लगाउन नसकिए पनि मंसिर २०६० तिर नयाँ मस्यौदा मन्त्रिपरिषद्मा बुझाइएको अनुमान गर्न सकिन्छ। *स्पेसटाइम* दैनिकमा प्रकाशित एउटा समाचारमा कानून मन्त्रालय सूत्रलाई उद्धृत गर्दै विद्युतीय कारोबार ऐन मंसिरको पहिलो साताभित्र मन्त्रिपरिषद्मा प्रस्तुत गर्ने उल्लेख थियो। उक्त समाचारमा कानून सुधार आयोगलाई त्यसभन्दा अघि तीन महिना यो ऐन सुधार गर्न समय दिइएको पनि उल्लेख छ।[३२] चैत ७, २०६० मा *अन्नपूर्ण पोष्ट* दैनिकको समाचारमा उक्त अध्यादेश मन्त्रिपरिषद् र विधेयक समितिले पास गरिसकेको तर राजाद्वारा लालमोहर लगाउन बाँकी रहेको उल्लेख छ।[३३] तर यो कानून मन्त्रिपरिषद्ले सजिलै पारित गरेको भने होइन।

विज्ञान तथा प्रविधि मन्त्रालयका पुरुषोत्तम घिमिरेका अनुसार अधिकांश मन्त्रीहरूले यो विषय बुझेकै थिएनन्। त्यसैले उनीहरूलाई बुझाउन उनले मन्त्रालयमा आयोजित पाँच/छ ओटा छलफलमा यस कानूनबारे बोलेका थिए।[३४] सन् २००२ देखि २००४ सम्ममा क्यानको कार्य समितिमा सदस्य रहेका भीमध्वज श्रेष्ठका अनुसार यस्ता केही छलफलमा क्यानका प्रतिनिधिलाई पनि बोलाइएको थियो। त्यस बेला छलफलको क्रममा नेपालमा किन विद्युतीय कारोबार सम्बन्धी ऐन चाहियो भन्ने

[३१] भाट, भोजराज। २०६०। प्रस्तावित 'साइबर ल' मस्यौदामाथि छलफल। *स्पेसटाइम*, साउन १९, पृ. २।

[३२] ढुंगेल, मोहन। २०६०। विद्युतीय कारोबार सम्बन्धी ऐन चाँडै आउने। *स्पेसटाइम*, कात्तिक २९, पृ. ९।

[३३] अन्नपूर्ण पोष्ट। २०६०। विद्युतीय कारोबार नियमावली लागू गर्ने तयारी छलफल सम्पन्न। चैत ७, पृ. १०।

[३४] विज्ञान तथा प्रविधि मन्त्रालयका तत्कालीन प्रवक्ता पुरुषोत्तम घिमिरेसँग भदौ १७, २०७८ मा गरिएको कुराकानी।

प्रश्न सोधिएको थियो, जसको उत्तरमा सिंगापुर र भारत जस्ता देशमा यस्तो कानून भएकाले नेपालमा पनि हुनुपर्ने बताइएको थियो।[३५] वैशाख २०६१ मा यो अध्यादेश स्वीकृतिका लागि ज्ञानेन्द्र शाह समक्ष पेश भइसकेको थियो।[३६]

भदौ २०६१ मा नेपालको संविधान, २०४७ को धारा ७२ अनुसार विद्युतीय (इलेक्ट्रोनिक) कारोबार अध्यादेश, २०६१ जारी गरियो। र, भदौ ३०, २०६१ मा *नेपाल राजपत्र*मा छापियो। यसपछि नै नेपालमा विद्युतीय कारोबारले कानूनी मान्यता पायो। यसबाट विद्युतीय रूपमा राखिएको सूचनामा क्षति पुऱ्याउनेलाई सजाय दिने व्यवस्थामात्र भएन कि कानून विपरीत विद्युतीय सामग्री प्रकाशन गर्नेलाई समेत सजायको व्यवस्था भयो।[३७] वैशाख २०६१ मै दरबारमा पेश भएको भनिएको अध्यादेशलाई लालमोहर लाग्न किन झण्डै तीन महिना लाग्यो? *नेपाल* म्यागेजिनमा प्रकाशित आफ्नो रिपोर्टिङमा मुकुल हुमागाईं र भोजराज भाटले जानकारी दिए अनुसार यो अध्यादेश विज्ञान तथा प्रविधि मन्त्रालय, कानून मन्त्रालय, कानून सुधार आयोग, उच्चस्तरीय सूचना प्रविधि आयोग, कम्प्यूटर एसोसिएसन अफ नेपाल र आइटी विशेषज्ञ तथा व्यापारीको चार वर्षको कसरतपछि लागू गरिएको थियो।[३८] त्यत्रो समयको कसरतबाट निर्मित यो कानून अन्तिममा अध्यादेशका रूपमा ल्याइनुमा उच्चस्तरीय सूचना प्रविधि आयोगको भूमिका बढी थियो। उक्त आयोग सूचना प्रविधि सम्बन्धी नीतिगत कार्य गर्नका लागि भदौ २०६० मा गठन गरिएको थियो। आयोगको समितिमा क्यानको सभापति पनि पदेन सदस्य थिए। तत्कालीन राजा ज्ञानेन्द्रसँग निकट शरद्चन्द्र शाह २०६० देखि राजा ज्ञानेन्द्रको प्रत्यक्ष शासनकालभरी (वैशाख २०६३ सम्म) यस आयोगका उपाध्यक्ष थिए।[३९] उनकै विशेष पहलमा

[३५] भीमध्वज श्रेष्ठसँग मंसिर १९, २०७८ मा गरिएको कुराकानी।

[३६] कान्तिपुर। २०६१। साइबर कानून र चेतना अभावले सूचना प्रविधिमा सुरक्षा समस्या। वैशाख ३१, पृ. ९।

[३७] गोरखापत्र। २०६१। विद्युतीय कारोबारलाई कानूनी मान्यता। असोज ३, पृ. २।

[३८] हुमागाईं, मुकुल र भोजराज भाट। २०६१। आयो साइबर कानून। *नेपाल*, असोज २४, पृ. ३४–३५।

[३९] Maharjan, Harsha Man. 2015. Rise and Fall of High Level Information Technology Commission in Nepal. A Paper Presented at the Fourth Annual Kathmandu Conference on Nepal and the Himalaya, July 22–24, Kathmandu.

अध्यादेशको रूपमा अन्तिममा यो कानून लागू गर्न सम्भव भएको हो। त्यस बेला मन्त्रालयले यो कानून अध्यादेशका रूपमा ल्याउन अनुरोध गरेको थियो र क्यानले पनि यसमा साथ दिएको थियो।[४०]

अध्यादेशका रूपमा आएको कानूनलाई २०५८ को मस्यौदासँग तुलना गर्दा प्रस्ट देखिने कुरा भनेको दण्ड सजायमा भएको बढोत्तरी र अपराधको परिभाषा/दायरालाई बढाउनु वा व्याख्या गर्नु हो। यसको राम्रो उदाहरण दफा ४७ हो, जुन पछि गएर धेरै विवादास्पद बन्यो। दफा ४७ मा भनिएको छ :

> विद्युतीय स्वरूपमा गैरकानूनी कुरा प्रकाशन गर्ने : (१) कम्प्यूटर, इन्टरनेट लगायतका विद्युतीय सञ्चार माध्यमहरूमा प्रचलित कानूनले प्रकाशन तथा प्रदर्शन गर्न नहुने भनी रोक लगाएका सामग्रीहरू वा सार्वजनिक नैतिकता, शिष्टाचार विरुद्धका सामग्री वा कसैप्रति घृणा वा द्वेष फैलाउने वा विभिन्न जात जाति र सम्प्रदाय बीचको सुमधुर सम्बन्धलाई खलल पार्ने किसिमका सामग्रीहरू प्रकाशन वा प्रदर्शन गर्ने वा गर्न लगाउने व्यक्तिलाई एक लाख रुपैयाँसम्म जरिवाना वा पाँच वर्षसम्म कैद वा दुवै सजाय हुनेछ।
> (२) कुनै व्यक्तिले उपदफा (१) बमोजिमको कसूर पटक-पटक गरेमा त्यस्तो कसूर बापत अघिल्लो पटक भएको सजायको डेढी सजाय हुनेछ।[४१]

वि.सं. २०५८ को मस्यौदाको दफा ६३ मा "कानूनले प्रकाशन र प्रसारण गर्न नहुने भनी रोक लगाएका सामग्री" मात्र भनिएको थियो तर यस अध्यादेशमा थप व्याख्या गरिएको छ। अनि सजाय पनि बढाइएको छ। वि.सं. २०५८ को मस्यौदामा गोपनीयता भंग गरे "दश हजार जरिवाना वा एक महिनासम्म कैद वा दुवै सजाय" भनिएकोमा

[४०] विज्ञान तथा प्रविधि मन्त्रालयका तत्कालीन प्रवक्ता पुरुषोत्तम घिमिरेसँग भदौ १७, २०७८ मा गरिएको कुराकानी।

[४१] श्री ५ को सरकार। २०६१। विद्युतीय कारोबार सम्बन्धमा व्यवस्था गर्न बनेको अध्यादेश। *नेपाल राजपत्र*, खण्ड ५४, अतिरिक्तांक २५।

अध्यादेशमा "एक लाख रुपैयाँ जरिवाना वा पाँच वर्षसम्म कैद वा दुवै सजाय हुने" बनाइएको थियो।

विज्ञान तथा प्रविधि मन्त्रालयका तत्कालीन प्रवक्ता पुरुषोत्तम घिमिरे यस मस्यौदामा रहेको दण्ड व्यवस्थालाई नागरिकलाई सचेत गर्ने प्रयासका रूपमा लिनुपर्ने तर्क गर्छन्। स्वतन्त्रता छ भन्दैमा जे पनि गर्न नहुने उनको विचार छ। त्यस बेला भारत र सिंगापुरमा भएको दण्ड व्यवस्थाभन्दा नेपालमा बढी नै राखिएको थियो किनभने अनलाइनबाट हुने क्षति अरू माध्यमभन्दा बढी हुन्छ भन्ने मानिएको थियो।[४२] वि.सं. २०५८ तिर नेपालमा इन्टरनेटमा पहुँच भएका व्यक्ति कम थिए। विश्व बैंकको तथ्यांक अनुसार सन् २००१ (वि.सं. २०५८) मा नेपालमा मात्र ०.२४ प्रतिशत मानिसको पहुँचमा इन्टरनेट थियो।[४३] त्यसैले यो दफा ४७ को प्रावधान अनलाइन मिडियाबाट हुने अभिव्यक्तिलाई ध्यान दिएर नै राखिएको देखिन्छ। त्यस बेला नेपालमा अनलाइन मिडियाहरू बारम्बार पाठक मत निम्त्याउँथे। प्रकाशित विभिन्न सामग्री उपर अनलाइन प्लेटफर्ममा हुने बहसका क्रममा भने कतैकतै "अमर्यादित" भाषा प्रयोग हुने गरेको थियो। उदाहरणका लागि उमेश श्रेष्ठले गरेको अनलाइनमा हुने अन्तर्क्रियाको अनुसन्धानमा *कान्तिपुर अनलाइन*ले सन् २००१ मा यस्तो सूचना जारी गरेको थियो : "विचार मञ्चमा अभिव्यक्त विचारहरू प्रयोगकर्ताहरूका हुन् र कान्तिपुर अनलाइन यो मञ्चमा भएका सामग्रीप्रति जिम्मेवार छैन, जसमा समाजका केही समूहलाई आपत्तिजनक र हानिकारक लाग्नसक्ने विचारहरू हुन सक्छन्।"[४४] यसको मतलब अनलाइन हुने अन्तर्क्रियामा कहिलेकाहीँ गालीगलौज र "अश्लील" शब्द प्रयोग भएको हुन सक्थ्यो।

[४२] विज्ञान तथा प्रविधि मन्त्रालयका तत्कालीन प्रवक्ता पुरुषोत्तम घिमिरेसँग भदौ १७, २०७८ मा गरिएको कुराकानी।

[४३] https://data.worldbank.org/indicator/IT.NET.USER.ZS?locations=NP मा उपलब्ध विवरण।

[४४] श्रेष्ठ, उमेश। २०७१। अनलाइन पत्रकारितामा अन्तर्क्रिया : नेपालका चार अनलाइन पत्रिकाहरूमा छापिएका प्रतिक्रियाहरूको गुणस्तर र आयाम विषयक अध्ययन। स्नातकोत्तर तहको शोधपत्र, त्रिभुवन विश्वविद्यालय, पृ. १५।

अध्यादेशको आयु छ महिना हुन्छ । यस अवधिमा संसद्बाट पारित हुन नसके त्यसै निष्क्रिय हुन्छ । निरन्तरको राजनीतिक अस्थिरता एवं माघ १९, २०६१ देखिको राजाको प्रत्यक्ष शासनपछि त झन् अध्यादेशैले देश चल्न थाल्यो । त्यसैले फागुन २८, २०६१ र भदौ २७, २०६२ मा गरी विद्युतीय (इलेक्ट्रोनिक) कारोबार अध्यादेश पटक-पटक जारी गरिएको थियो ।

### *अध्यादेश नै ऐनमा परिणत*

वि.सं. २०६२–२०६३ को "दोस्रो जनआन्दोलन" को बलबाट २०६३ जेठमा प्रतिनिधि सभाको घोषणापछि भने ऐनका रूपमा यो कानून लागू हुने वातावरण बन्यो । प्रतिनिधिसभा नियमावली, २०६३ मा प्रतिनिधि सभामा विधेयक पेश गर्ने र पारित गर्ने प्रक्रिया बृहत्मा उल्लेख छ । सो नियमावली अनुसार प्रतिनिधि सभाका सदस्यले विधेयक पेश गर्न सक्थे ।[४५]

पहिला अध्यादेशका रूपमा आएको हुँदा यो कानूनलाई समयमै पारित गर्नुपर्ने बाध्यता थियो । त्यस बेला सूचना प्रविधि क्षेत्रका केही व्यक्तिले शाही शासनको पालामा आएको यो कानून नयाँ सरकारले त्यसै निष्क्रिय बनाउन सक्छ भन्ने आशंका गरेका थिए । त्यसैले उनीहरूले विज्ञान तथा प्रविधि मन्त्रीलाई व्यक्तिगत तथा सामूहिक रूपमा भेटेर यो कानून ल्याउन दबाब दिएका थिए ।[४६] त्यसपछि नै विज्ञान तथा प्रविधि राज्यमन्त्री मानबहादुर विश्वकर्माले यो कानूनलाई विधेयकका रूपमा प्रतिनिधि सभामा प्रस्तुत गरे ।

त्यस बेला प्रतिनिधि सभामा भएको बहसको अभिलेख हेर्दा त्यहाँ यो विधेयक उपर खासै बहस भएको देखिएन । शुरूमा भदौ १९, २०६३ को प्रतिनिधि सभाको बैठक ६६ मा "विद्युतीय (इलेक्ट्रोनिक) कारोबार विधेयक" प्रस्तुत गर्न राज्य मन्त्री विश्वकर्माले अनुमति मागेका थिए । त्यस उपर कसैले विमति जनाएनन् र त्यही दिन उनले उक्त विधेयक प्रस्तुत गरे । त्यस्तै, भदौ २० को बैठक ६७ मा यस विधेयकमाथि

[४५] नेपाल सरकार । २०६३ । प्रतिनिधि सभा नियमावली, २०६३ । *नेपाल राजपत्र*, खण्ड ५६, अतिरिक्तांक १८, जेठ २७ ।

[४६] क्यानका सदस्य भीमध्वज श्रेष्ठसँग मंसिर १९, २०७८ मा गरिएको कुराकानी ।

सैद्धान्तिक छलफलको क्रममा पनि कसैले यसबारे आफ्नो धारणा राखेनन् । अनि भदौ २५ मा भएको बैठक ६८ मा दफावार छलफलका लागि समितिमा पठाउने जानकारी सभामुखले दिंदा यसमा सबैको सहमति थियो । यस बैठकको करिब एक महिनापछि अर्थात् कात्तिक २१ मा भएको बैठक ८५ मा विकास समितिले बुझाएको सात बुँदे संशोधन सहित यो कानून पारित भयो ।[४७] तत्पश्चात् मंसिर २२, २०६३ मा विद्युतीय (इलेक्ट्रोनिक) कारोबार ऐन, २०६३ लागू गरिएको थियो । तत्कालीन प्रतिनिधि सभाले पारित गरेको यो २७ औँ कानून थियो ।

वि.सं. २०६२ को अध्यादेश र २०६३ को ऐनको तुलना गर्दा खासै भिन्नता पाइँदैन । दफा ४७ त हुबहु नै राखिएको छ । यसरी राजा सक्रिय हुँदा थपिएको विवादास्पद दफा ४७, जनआन्दोलनपछि २०६३ मा पुनर्गठित प्रतिनिधिसभाले एउटा पूर्ण विराम र अल्पविराम समेत परिवर्तन नगरी पारित गरेको देखिन्छ । यो दफामा भएका "सार्वजनिक नैतिकता," "शिष्टाचार," "जात जाति र सम्प्रदाय बीचको सुमधुर सम्बन्धलाई खलल" जस्ता शब्दावलीको व्याख्या अस्पष्ट र व्यक्तिपिच्छे फरक हुनसक्छ । यदि प्रतिनिधि सभाले चाहेको भए त्यो दफा हटाउन सक्थ्यो वा नागरिकको अभिव्यक्ति स्वतन्त्रता विरुद्ध कसैले उक्त दफाको प्रयोग गर्न नसकून भनी परिमार्जन गर्न सक्थ्यो ।

वि.सं. २०६३ तिर यस ऐनमा भएको दफा ४७ बारे कसैले चासो लिएको देखिँदैन । यस दफाले पार्नसक्ने असरबारे सूचना प्रविधि क्षेत्रका व्यक्ति/समूह, पत्रकार र मानवअधिकारकर्मीले त्यस बेला बहस गरेको देखिँदैन । शायद त्यस बेला इन्टरनेटको प्रयोग नेपालमा व्यापक नभएकाले पनि यस दफामा ध्यान नगएको हुनसक्छ । विश्व बैंकको तथ्यांक हेर्दा सन् २००७ सम्ममा नेपालमा कुल जनसंख्याको १.४१ प्रतिशतले मात्र इन्टरनेटमा पहुँच राख्थे । यो बढेर सन् २००९ मा १.९७ पुग्यो अनि सन् २०१० मा भने ७.९३ प्रतिशत पुग्यो ।[४८] शुरूमा उक्त कानूनमा यस्तो गम्भीर दफा छ भन्ने

[४७] विकास समितिमा मार्टिन चौतारीले यी बुँदा खोज्ने प्रयास गरेको थियो तर यस्ता पुराना दस्तावेज भेट्न सकिएन ।

[४८] https://data.worldbank.org/indicator/IT.NET.USER.ZS?locations=NP मा उपलब्ध ववरण ।

कुरा पत्रकार वर्गले चालै पाएका थिएनन् । जब एकपछि अर्को गर्दै पत्रकार पनि यो दफा प्रयोग गरी समातिन थाले तब मात्र यो दफा बढी बहसमा आयो ।[४९] हुन पनि यो दफाको प्रयोग शुरूका केही वर्षसम्म भएको थिएन ।

नेपालमा इन्टरनेटको पहुँच बढेसँगै अझ विशेष गरी सामाजिक सञ्जालको प्रयोग बढेपछि भने यस दफाको प्रयोग/दुरुपयोग बढ्यो । अधिवक्ता आशंकन मल्लको अध्ययन अनुसार यो दफाको प्रयोग गरी पहिलो चोटि २०६७ मा मात्र अदालतमा मुद्दा चलेको देखिन्छ ।[५०] पत्रकार र मानवअधिकारकर्मी तारानाथ दाहालका अनुसार नेपालमा इन्टरनेटमा आलोचना, गाली बेइज्जती बढ्न थालेपछि तिनलाई नियन्त्रण गर्ने कानून खोज्दै जाँदा नेपाल प्रहरीको आँखा यो दफामा पर्न गएको देखिन्छ । यसपछि यस दफालाई समातेर मुद्दा चलाइन थालेको पाइन्छ । प्रहरीबाट यस कानूनको दुरुपयोग भए पनि धेरै मुद्दामा अदालतले आरोपितहरूलाई सफाइ दिएको दाहालको ठहर छ ।[५१] पछिल्लो समय यसै दफाको प्रयोग गरी पत्रकार, बुद्धिजीवी, कलाकार, र अन्य सर्वसाधारण व्यक्ति प्रहरी हिरासतमा पुगेका छन् ।[५२]

## निष्कर्ष

वि.सं. २०५७ देखि २०६३ सम्मको विद्युतीय कारोबार सम्बन्धी कानून निर्माण प्रक्रियालाई नियाल्दा यो सहभागितामूलक तरिकाबाट भएको देखिन्छ । यसमा सरकारी कर्मचारी, सूचना प्रविधि विज्ञ, व्यापारी, सर्वसाधारणालाई समय-समयमा सहभागी गराइएको थियो । तर यसरी सहभागी गराइँदा पनि कानूनका मस्यौदामा सर्वसाधारणको विचार कसरी समेटियो भन्ने थाहा पाउन सजिलो छैन । जुन बेलामा यो कानून लागू भयो, नेपालमा इन्टरनेट नौलो नै थियो र सर्वसाधारणको पहुँच पनि

[४९] तारानाथ दाहालसँग मंसिर २३, २०७८ मा गरिएको कुराकानी ।

[५०] मार्टिन चौतारीले असार ८, २०७८ मा साइबर अपराधबारे आयोजना गरेको कार्यक्रममा मुख्य वक्ता आशंकन मल्लले व्यक्त गरेको विचार । यसको भिडियोका लागि हेर्नुहोस् : www.youtube.com/watch?v=hXgzlOxfkio

[५१] तारानाथ दाहालसँग मंसिर २३, २०७८ मा गरिएको कुराकानी ।

[५२] Martin Chautari. 2021. *Freedom of Expression in Nepal in the Digital World: A Policy Review*. Research Brief No. 31. Kathmandu: Martin Chautari.

यस माध्यममा कम थियो । अनि यो कानूनको नामले नै यो विद्युतीय कारोबारबारे हो भन्ने सन्देश दिने हुँदा सर्वसाधारण एवं पत्रकार जगतको चासो कम भएको अनुमान गर्न सकिन्छ । विद्युतीय कारोबारबारे भनी आएको यस कानूनमा अभिव्यक्ति स्वतन्त्रताबारे पनि दफा छ भन्ने हेक्का २०६३ सालसम्म धेरैलाई भएन । त्यसैले यो दफा/कानून सार्वजनिक बहसको विषय बन्न सकेन ।

यसरी समग्रमा विद्युतीय कारोबार सम्बन्धी कानूनको निर्माण प्रक्रिया हेर्दा यो कानून बन्नुमा सूचना प्रविधि क्षेत्रको संस्था र व्यक्तिको सक्रिय सहभागिता रहेको देखिन्छ । यस क्षेत्रले शुरूमा आफ्नै तर्फबाट कानूनको मस्यौदा बुझाउनेदेखि आफ्नो क्षेत्रमा देखिएका नयाँ समस्या समाधानका लागि समय-समयमा यो कानून ल्याउन सुझाव र दबाब दिएको थियो । त्यसैले अस्थिर राजनीतिक अवस्थामा अध्यादेशका रूपमा यो कानून ल्याउन वा प्रतिनिधि सभाको स्थापनापछि ऐन ल्याउन क्यान लगायत सूचना प्रविधिका व्यापारी, विज्ञको महत्त्वपूर्ण भूमिका छ । यदि इन्टरनेटमा "गैरकानूनी" सामग्री प्रसार गर्न नदिने प्रावधानका बारे कोही जानकार थिए भने यही समुदाय, वकिल र प्रतिनिधि सभाका सदस्य थिए । तर यो दफालाई २०६३ सालमा उनीहरूले बहसको विषय बनाएनन् । हुन त क्यानले २०५७ मा बुझाएको मस्यौदामा यस्तो दफा राखिएको पनि थिएन । पछि कानून मन्त्रालय, नेपाल कानून सुधार आयोग, विज्ञान तथा प्रविधि मन्त्रालय र उच्चस्तरीय सूचना प्रविधि आयोगले यस्तो बन्देजको आवश्यकता देखेको थियो र प्रतिनिधि सभाले पनि यसको अनुमोदन गरेको थियो । सूचना प्रविधि क्षेत्रको बढी सक्रियताकै कारण यो कानून नेपालमा लागू हुन सम्भव भएको यस अध्ययनले देखाएको छ ।

पत्रकार र मानवअधिकार क्षेत्रबाट यो कानूनको दफा ४७ को आलोचना भएपछि यस ऐनमा आवश्यक सुधार गर्न सकिन्थ्यो । सुधार गर्ने क्रममा यस ऐनमा भएका विद्युतीय कारोबारसँग असम्बन्धित, अभिव्यक्ति स्वतन्त्रतालाई कुण्ठित गर्ने यो दफा संशोधन गर्न वा हटाउन सकिन्थ्यो ।[५३] त्यस्तै, यो दफामा परिवर्तन नगरे पनि यसको दुरुपयोग कम गर्न केही उपाय निकाल्न सकिन्थ्यो । उदाहरणका लागि यो

[५३] माटिन चौतारीले "विद्युतीय कारोबार ऐन, २०६३ को निर्माण प्रक्रिया" शीर्षकमा मंसिर २६, २०७८ मा आयोजना गरेको कार्यक्रममा सूचना प्रविधि विज्ञ राजिव सुब्बाद्वारा व्यक्त विचार ।

दफा दुरुपयोग गर्नेलाई सजायको व्यवस्था वा बदनियतपूर्वक चलाइएको कारवाहीका कारण यस दफाबाट पीडित भएकालाई क्षतिपूर्तिको व्यवस्था गर्न सकिन्थ्यो । तर विगत १५ वर्षमा संसद् वा सरकार यो दफाको दुरुपयोग कम गर्ने गरी सुधारका उपाय खोज्नतिर नलागेको बरु यो ऐन नै खारेज गरी सूचना प्रविधि विधेयक ल्याउन अग्रसर रहेको देखिन्छ । विद्युतीय कारोबार ऐनलाई प्रतिस्थापन गर्ने गरी ल्याइएको यो विधेयक पनि विवादास्पद भई संसद्मै विचाराधिन हुँदा दफा ४७ को दुरुपयोग जारी छ । यो कानूनमा आवश्यक सुधार नगरिएकाले राजनीतिक आस्थाका आधारमा प्रतिशोध लिन र व्यक्तिगत रिस-इवी साँध्न यो दफाको दुरुपयोग भइरहेको र भावी कानूनमा पनि यस्ता पक्षबारे सचेत नहुने हो भने भविष्यमा पनि नागरिकको अभिव्यक्ति स्वतन्त्रता कुण्ठित गर्ने प्रयास दोहोरिने देखिन्छ ।[५४]

## धन्यवाद

यो शोध-संक्षेप मार्टिन चौतारीका अनुसन्धाता हर्षमान महर्जनले तयार पार्नुभएको । यसका लागि उहाँलाई विशेष धन्यवाद छ । यसका विभिन्न मस्यौदा पढेर सुझाव दिनुहुने प्रत्यूष वन्त, लोकरञ्जन पराजुली, देवेन्द्र उप्रेती, रुख गुरुङ, श्याम कुँवर, सन्जिला मोक्तान र मस्यौदामा सुझाव सहित यसको सम्पादन गर्नुहुने देवराज हुमागाईंप्रति पनि आभारी छौँ । साथै, यसै अनुसन्धानमा आधारित रही मार्टिन चौतारी छलफल शृंखलामा मंसिर २६, २०७८  मा गरिएको प्रस्तुतिका क्रममा महत्त्वपूर्ण सुझाव दिनुहुने सहभागीहरूलाई धन्यवाद छ । अन्तमा, यो अनुसन्धान र प्रकाशनका लागि आर्थिक सहयोग उपलब्ध गराइदिने ओपन सोसाइटी फाउण्डेशनप्रति कृतज्ञ छौँ ।

[५४] Martin Chautari. 2021. *Freedom of Expression in Nepal in the Digital World: A Policy Review*. Research Brief No. 31| Kathmandu: Martin Chautari.